


अन्तर्वार्ता



आभास धरानन्द राजोपाध्याय

फागुन १०, २०७६ | शनिबार | काठमाडौं

# संकटका बेला मिडिया मानवीयतामा केन्द्रित हुनैपर्छः सञ्चारविद् रेग्मी



नेपाली सञ्चार जगतका लागि प्राध्यापक **रामकृष्ण रेग्मी** नयाँ नाम होइन। झन्डै ४५ वर्षदेखि पत्रकारिता र सञ्चार क्षेत्रका विभिन्न पक्षको अध्ययन-अनुसन्धानमा पनि लागेका छन् उनी। उनी विगत २० वर्षदेखि कान्तिपुर सिटी कलेजमा स्नातकोत्तर तहमा पत्रकारिता पढाउँछन्।

एकातिर, चीन कोरोनाभाइरसको प्रकोपसँग जुध्दै गर्दा र मिडियामा भएका यससम्बन्धी ‘कभरेज’बारे बहस सुरु भएको छ। अर्कातिर, एक अखबारमा कोरोनाभाइससम्बन्धी ‘कन्टेन्ट’ मा छापिएको तस्बिरप्रति आपत्ति जनाउँदै काठमाडौंस्थित चिनियाँ दूतावासले निकालेको विज्ञप्तिको भाषा ‘धम्कीपूर्ण’ भन्दै आलोचित भएको छ।

मिडिया इथिक्स र प्रकोपका बेला मिडिया कभरेज कस्तो हुनुपर्छ भन्ने विषयमा नेपालन्युजका लागि **आभास धरानन्द राजोपाध्याय**ले प्राध्यापक रेग्मीसँग गरेको संक्षिप्त कुराकानीको सम्पादित अंशः

**विशेषतः महामारी वा प्रकोपका बेलामा मिडियाको भूमिका के-कस्तो हुनुपर्छ?**

मिडियाको सामान्य नैतिक मान्यता हो, यसले सही सूचना दिने। महामारीका बेला वा संकटका बेलामा मिडिया अरुझैँ अगाडि ‘फोरफ्रन्ट’मा हुनुपर्छ। त्यस्तो बेला सूचना रोक्न त मिल्दैन।

यस्तो अवस्थामा मिडियाको दोहोरो भूमिका हुन्छ– एक सूचनाको सम्प्रेषणलाई निरन्तरता दिने। सूचना दिनु मिडियाको पहिलो कर्तव्य हो र, संकटका बेला सही समयमा सही सूचना दिनु झन् महत्त्वपूर्ण हुन्छ। त्यस्तै, मिडियाको अर्को भूमिका हुन्छ, सामाजिक बेथिति निम्त्याउन नदिने। यसमा मिडिया थप सजग हुनु आवश्यक छ।

**मिडियाले ‘फ्रन्टलाइन’मा बसेर ‘फर्स्ट रेस्पोन्स’ पहिलो प्रतिक्रिया दिने हो। यस्तो बेलामा भने थप सजग र जिम्मेवार हुन अत्यावश्यक हुन्छ।**

**कोरोनाभाइरससँग जुध्दै गर्दा चीनको मिडियाप्रति धारणा कस्तो पाउनुभएको छ? विशेषतः नेपालमा चिनियाँ दूतावासले विज्ञप्ति जारी गरी प्रतिक्रिया दिनुलाई कसरी हेर्नुहुन्छ?**

यो विषयले मिडिया, कूटनीति, अन्तर्राष्ट्रिय सम्बन्धजस्ता क्षेत्रलाई छुन्छ। अरू विषयमा म भन्न सक्दिनँ, तर मिडियाको दृष्टिकोणबाट यो भन्न सक्छु– सूचना सम्प्रेषण रोकिनु हुँदैन र अभिव्यक्ति स्वतन्त्रतालाई सधैँ सम्मान गरिनुपर्छ।

चीनले जसरी कोरोनाभाइरससँग जुध्दै छ, त्यो साँच्चिकै तारिफयोग्य छ। त्यहाँको सामाजिक परिस्थितिमा मिडियाले पनि आफ्नो भूमिका राम्रोसँग निभाइरहेको छ।

प्रत्येक मिडियाको आफ्नो सम्पादकीय धार हुन्छ। त्यसअनुसार द काठमाडौँ पोस्टले एक कोरियाली पत्रिकाको लेख छाप्यो, त्यो पहिले पनि उसले गर्दै आएको थियो। त्यो मात्र समग्र चित्रण अवश्य होइन। तर, विचारमा आएका अभिव्यक्तिलाई रोक्न चाहिँ भएन नि! अभिव्यक्तिको स्वतन्त्रता र विचार सम्प्रेषणलाई अनुकूल भएन भनेर रोक्न मिल्दैन नि!

**पश्चिमा श्रेष्ठता देखिएको हो त? त्यहाँको मिडिया हाबी हुन खोजेको हो?**

यसपटक कोरोनाभाइरससँग लड्दा मिडियाको भूमिका निकै सराहनीय देखिन्छ। यो भूमिका सार्स, बर्डफ्लुजस्ता प्रकोपबाट सिक्दै परिस्कृत भएको हो।

पश्चिमा मिडिया शक्तिशाली देखिन्छ नै, उनीहरूसँग स्रोतसाधन छ, अर्थव्यवस्थामा नियन्त्रण छ। तर, चीनको विश्वशक्तिको रूपमा अगाडि बढ्दै गर्दा उनीहरूको प्रणालीले नियन्त्रित बनाएको मिडियालाई 'अधिनायकवादी' भनी चित्रण गर्ने प्रयास नभएको होइन।

यस्तो प्रवृत्ति झन् प्रकोपको बेला पनि देखिनु दुर्भाग्यपूर्ण छ।

**यसमा समग्र मिडियाको भूमिका केकस्तो रहन्छ? विशेष नेपाली मिडियाले सिक्नुपर्ने पाठ चाहिँ के हो?**

अघि भनेझैँ मिडियाले सूचनाको सम्प्रेषण कदापि रोक्नु हुँदैन। सूचना सम्प्रेषणको यो प्रक्रिया निरन्तर चल्नुपर्छ।

त्यस्तै, प्रकोपका बेला विशेषतः सामाजिक बेथिति निम्त्याउने भ्रामक सामग्री दिनु हुन्न। संकटका बेलामा मानवीयतामा केन्द्रित हुनै पर्छ। यसबाट मिडिया अछुतो हुन सक्दैन, आखिर हाम्रो काम अन्ततः जनताकै लागि हो।

मिडियाले 'फ्रन्टलाइन'मा बसेर 'फर्स्ट रेस्पोन्स' पहिलो प्रतिक्रिया दिने हो। यस्तो बेलामा भने थप सजग र जिम्मेवार हुन अत्यावश्यक हुन्छ।

प्रकाशित: Feb 22, 2020 | 09:43:03